


क्वयेर युथ ग्रुप

Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको क्वयेर अधिकारमा कार्यरत छौँ।


नेसं ११४१/०१/०३, २२ अक्टोबर २०२०, २०७७/०७/०६ विसं




## सार्वजनिक वक्तव्य

पारलैङ्गिक पहिचानको रोगिकरणलाई समाप्त गर्न हरेक वर्ष अक्टोबर २२ तारिखका दिन - पारलैङ्गिक पहिचानको रोगिकरण विरुद्धको अन्तर्राष्ट्रिय कार्य दिवस मनाइने गरिन्छ। मुख्यतः स्पेनी सन्दर्भबाट सन् २००९मा सुरु भएको यस आन्दोलनले विश्वव्यापी स्थान लियो। लैङ्गिक पहिचानको रोगिकरणलाई उन्मुलन गर्नका निम्ति विश्वभरीका अभियानकर्ताहरू जुटेका छन्।

सन् २०१९ मे महिनामा भएको ७२औँ विश्व स्वास्थ्य सभा (डब्लू एच ए) दौरान, विश्व स्वास्थ्य संगठनले रोगहरूको अन्तर्राष्ट्रिय वर्गिकरण - ११औँ संसोधन (आइ सि डि ११) औपचारिक रूपमा अपनाएर मानसिक र व्यवहार सम्बन्धीको विकार अध्यायबाट पारलैङ्गिक पहिचानसँग सम्बन्धित वर्गिकरणहरू हटाई औपचारिक रूपमा पारलैङ्गिक पहिचानको मनोरोगिकरणलाई हटाए। यद्यपि पारलैङ्गिक पहिचानको रोगिकरणलाई पूर्ण निर्मूल गर्नका निम्ति अझै धेरै काम गर्न आवश्यक छ।

नेपालको सर्वोच्च अदालतले सदैव लैङ्गिक विविधतालाई प्राकृतिक र लैङ्गिक पहिचानलाई स्वःअनुभूती एवं आत्मनिर्णयको विषय भनी परिभाषित / फैसला गरेको छ। तैपनि यसै साल जून महिनामा प्रस्तावित नागरिकता ऐन २०६३ संसोधन विधयक र राज्य व्यवस्था तथा सुशासन समितिले पारित गरेको प्रतिवेदनले नागरिकता प्रमाणपत्र आफ्नो लैङ्गिक पहिचान अनुसार प्राप्त गर्न वा संसोधन गर्नका निम्ति 'चिकित्सकको सिफारिस' आवश्यक भन्ने प्रावधान राखी रोगिकरणलाई वैधानिकता दिन खोजेको छ। उक्त विधयकले पारलैङ्गिक र विविध लैङ्गिक पहिचानका व्यक्तिहरूको अधिकारमा थप अंकुश लगाउने योजना बनाएको छ।

पारलैङ्गिक पहिचानको रोगिकरण पारद्वेषिता (ट्रान्सफोबिया) र त्याचलैङ्गिक-मुग्धी (सिस्-सेक्सिजस)मा जडित छ जसले पारलैङ्गिक व्यक्तिहरू विरुद्धका हिंसा, लाञ्छना र विभेदका सबै स्वरूपहरूलाई तीव्रतापूर्वक प्रोत्साहन गर्दछ।

पारलैङ्गिक पहिचानलाई रोगिकरण गर्ने सबै प्रकारका कानुनहरूलाई हटाउन, पारलैङ्गिक व्यक्तिहरूले आत्मनिर्णयको आधारमा आफ्नो नाम र लैङ्गिक विवरण परिवर्तन गर्न पाउने कानुनी प्रावधानको स्थापना गर्न एवं हाम्रो शरीर बारे स्वतन्त्र भयी स्वःनिर्णय गर्न पाउने अधिकार र आत्मसम्मान सहितको जीवनयापन गर्ने अधिकारको सुनिश्चित गर्न हामी सरकारलाई आवहान गर्दछौँ।

रुक्शना कपाली
कार्यकारी निर्देशक


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९१
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal QueerYouthGroup